निर्वाचन आयोग ऐन, २०६३

प्रमाणीकरण र प्रकाशन मिति

२०६३।१२।१२

१. **निर्वाचन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६४  २०६४।९।२०**

व्यवस्थापिका-संसदले बनाएको २०६३ सालको ऐन न.१

निर्वाचन आयोगको काम, कर्तव्य र अधिकार सम्बन्धी कानूनमा संशोधन र एकीकरण गर्न बनेको ऐन

प्रस्तावना : निर्वाचन आयोगको काम, कर्तव्य र अधिकार सम्बन्धी कानूनमा संशोधन र एकीकरण गर्न वाञ्छनीय भएकोले,

व्यवस्थापिका-संसद्ले यो ऐन बनाएको छ ।

परिच्छेद-१

प्रारम्भिक

१. संक्षिप्त नाम र प्रारम्भ : (१) यस ऐनको नाम "निर्वाचन आयोग ऐन, २०६३" रहेको छ ।

(२) यो ऐन तुरुन्त प्रारम्भ हुनेछ ।

२. परिभाषा : विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस ऐनमा,-

(क) "संविधान" भन्नाले नेपालको अन्तरिम संविधान, २०६३ सम्झनु पर्छ ।

(ख) "आयोग" भन्नाले संविधानको धारा १२८ बमोजिमको निर्वाचन आयोग सम्झनु पर्छ ।

(ग) "आयुक्त" भन्नाले आयोगको निर्वाचन आयुक्त सम्झनु पर्छ र सो शब्दले प्रमुख निर्वाचन आयुक्त समेतलाई जनाउँछ ।

(घ) "निर्वाचन" भन्नाले संविधानको धारा ६३ बमोजिम गठन हुने संविधान सभाको सदस्य वा प्रचलित कानून बमोजिम आयोगले गराउनु पर्ने अन्य निर्वाचन सम्झनु पर्छ र सो शब्दले उपनिर्वाचन समेतलाई जनाउँछ ।

(ङ) "मतदाता" भन्नाले निर्वाचनको लागि प्रचलित कानून बमोजिम मतदाता नामावलीमा नाम दर्ता भएको व्यक्ति सम्झनु पर्छ ।

(च) "निर्वाचन अधिकृत" भन्नाले आयोगबाट नियुक्त भएको मुख्य निर्वाचन अधिकृत वा निर्वाचन अधिकृत सम्झनु पर्छ र सो शब्दले सहायक निर्वाचन अधिकृत समेतलाई जनाउँछ ।

(छ) "राजनैतिक दल" भन्नाले संविधानको धारा १४२ बमोजिम निर्वाचन प्रयोजनका लागि दर्ता भएको राजनैतिक दल सम्झनु पर्छ ।

(ज) "तोकिएको" वा "तोकिए बमोजिम" भन्नाले यस ऐन अन्तर्गत बनेका नियममा वा आयोगले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी जारी गरेको आदेशमा तोकिएको वा तोकिए बमोजिम सम्झनु पर्छ ।

## परिच्छेद-२

## आयोगको काम, कर्तव्य र अधिकार

३. आयोगको केन्द्रीय सचिवालय र स्थानीय कार्यालयको स्थापना : (१) आयोगले सम्पादन गर्नु पर्ने कामका लागि केन्द्रीयस्तरमा आयोगको सचिवालय रहनेछ ।

(२) आयोगले आफूले सम्पादन गर्नु पर्ने कामका लागि आवश्यकतानुसार स्थानीयस्तरमा कार्यालयहरु स्थापना गर्न सक्नेछ ।

४. आयोगको बैठक र निर्णय : (१) संविधान तथा प्रचलित कानून बमोजिम आयोगले गर्नु पर्ने सबै काम प्रमुख निर्वाचन आयुक्त मात्र रहेको अवस्थामा निजबाट र अन्य आयुक्त समेत रहेको अवस्थामा निजहरुको बैठक बसी निर्णय भए बमोजिम हुनेछ ।

(२) आयोगको निर्णयको अभिलेख आयोगको सचिवले रीतपूर्वक राख्नु पर्नेछ ।

(३) आयोगको निर्णय आयोगको सचिवले प्रमाणित गरी कार्यान्वयन गर्नु वा गराउनु पर्नेछ ।

(४) आयोगको बैठक सम्बन्धी कार्यविधि आयोगले निर्धारण गरे बमोजिम हुनेछ ।

५. कर्मचारी सम्बन्धी व्यवस्था : (१) आयोगले मतदाता नामावली तयार गर्नका लागि आवश्यक संख्यामा प्रमुख नाम दर्ता अधिकारी, नाम दर्ता अधिकारी, सहायक नाम दर्ता अधिकारी, मतदाता नामावली सङ्कलनकर्ता र निर्वाचनको कामका लागि मुख्य निर्वाचन अधिकृत, निर्वाचन अधिकृत, सहायक निर्वाचन अधिकृत, मतदान अधिकृत, सहायक मतदान अधिकृत लगायत आवश्यक देखिएका अन्य पद सिर्जना गरी त्यस्ता पदहरुमा आवश्यकतानुसार कर्मचारीहरु नियुक्त गर्न वा तोक्न सक्नेछ ।

(२) आयोगले नेपाल सरकारको वा नेपाल सरकारको स्वामित्व वा नियन्त्रणमा रहेको वा नेपाल सरकारको अनुदानमा सञ्चालित संस्था वा स्थानीय निकायका कर्मचारी वा सामुदायिक विद्यालयका शिक्षकलाई निर्वाचनको कुनै काममा खटाउन वा लगाउन सक्नेछ ।

(३) उपदफा (१) वा (२) बमोजिम निर्वाचनको काममा संलग्न कर्मचारी निर्वाचनको काम सम्पन्न नहुञ्जेलसम्म आयोगको कर्मचारी मानिनेछ र प्रचलित कानूनमा जुनसुकै कुरा लेखिएको भए तापनि आयोगको स्वीकृतिबिना अख्तियारवालाले त्यस्ता कर्मचारीको सेवा शर्तमा प्रतिकूल असर पर्ने

गरी कुनै काम गर्न वा आयोगको काम गर्नबाट हटाउन वा सरुवा गर्न पाउने छैन ।

६. सहयोग लिन सक्ने : (१) आयोगले निर्वाचनको कामका लागि नेपाल सरकारको कुनै मन्त्रालय, विभाग, कार्यालय वा संवैधानिक निकाय वा नेपाल सरकारको स्वामित्व वा नियन्त्रणमा रहेको वा नेपाल सरकारको अनुदानमा सञ्चालित संस्था वा स्थानीय निकायसँग सोझै सम्पर्क राख्न र त्यस्ता संस्था वा निकायबाट कुनै पनि सहयोग लिन सक्नेछ ।

(२) आयोगले निर्वाचनको कामका लागि कुनै निजी वा सार्वजनिक संस्थाबाट आवश्यक सहयोग लिन वा त्यस्ता संस्था वा निकायबाट निर्वाचन सम्बन्धी काम गराउन सक्नेछ ।

(३) उपदफा (१) वा (२) बमोजिम आयोगले मागेको सहयोग उपलब्ध गराउने कर्तव्य सम्बन्धित संस्था वा निकायको हुनेछ ।

७. अनुगमन गर्ने वा गराउने : (१) आयोगले आयोगका पदाधिकारी वा कर्मचारी वा नेपाल सरकारका कर्मचारी वा विशेषज्ञ सहितका टोली तोकिए बमोजिम गठन गरी निर्वाचनसँग सम्बन्धित मतदान वा मतगणनाको काम वा निर्वाचनको कामसँग सम्बन्धित अन्य काम कारबाहीको अनुगमन गर्न वा गराउन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम आयोगले टोली गठन गर्दा तोकिएको आधारमा अनुगमन गर्ने निर्वाचन क्षेत्र, अनुगमन गर्दा अपनाउनु पर्ने कार्यविधि र त्यस्ता टोलीले अनुगमनको काम सम्पन्न गर्नु पर्ने समय समेत निर्धारण गर्नु पर्नेछ ।

८. पर्यवेक्षण गर्न दिने : (१) आयोगले कुनै स्वदेशी वा विदेशी व्यक्ति वा संस्थालाई निर्वाचनसँग सम्बन्धित मतदान वा मतगणनाको काम वा निर्वाचनको कामसँग सम्बन्धित अन्य काम कारबाहीको पर्यवेक्षण गर्नका लागि यस सम्बन्धी अनुभव, विश्वसनीयता लगायत तोकिएको आधारमा अनुमति दिन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम अनुमति प्राप्त गरेका व्यक्ति वा संस्थाले आयोगले पर्यवेक्षणका निमित्त तोके बमोजिमको कार्यविधि पूरा गरी पर्यवेक्षण गर्नु पर्नेछ र त्यस्तो कार्यविधि पालन नगरी पर्यवेक्षण गर्ने व्यक्ति वा संस्थाको अनुमति आयोगले रद्द गर्नेछ ।

(३) उपदफा (१) बमोजिम अनुमति प्राप्त गरेका व्यक्ति वा संस्थाले पर्यवेक्षण कार्य समाप्त भएपछि सोको प्रतिवेदन आयोग समक्ष दिनु पर्नेछ ।

(४) यस दफा बमोजिम पर्यवेक्षणका लागि अनुमति प्राप्त गरेका स्वदेशी वा विदेशी व्यक्ति वा संस्थाले पर्यवेक्षण गर्दा आयोगले बनाएको आचारसंहिता पालना गर्नु पर्नेछ ।

९. भौतिक साधन प्रयोग गर्न सक्ने : (१) आयोगले निर्वाचनको काम सञ्चालन गर्नका लागि नेपाल सरकारको वा नेपाल सरकारको स्वामित्व वा नियन्त्रणमा रहेका संस्था वा स्थानीय निकायको जग्गा,

भवन, परिवहनको साधन, फर्निचर वा अन्य जुनसुकै भौतिक साधन पूर्वसूचना दिई आवश्यकतानुसार प्राप्त गरी प्रयोग गर्न सक्नेछ।

(२) आयोगले निर्वाचनको काम सञ्चालन गर्नका लागि कुनै सार्वजनिक संस्था वा निकाय वा सार्वजनिक वा निजी विद्यालय वा महाविद्यालयको जग्गा, भवन, फर्निचर वा अन्य भौतिक साधन पूर्वसूचना दिई आवश्यकतानुसार प्राप्त गरी प्रयोग गर्न सक्नेछ।

(३) आयोगले निर्वाचनको काम सञ्चालन गर्नका लागि कुनै व्यक्ति वा गैरसरकारी संस्था वा निकायको जग्गा, भवन, परिवहनको साधन, फर्निचर वा अन्य भौतिक साधनको भाडा दिने गरी प्रयोग गर्न सक्नेछ।

१०. कामबाट हटाउन सक्ने : (१) आयोगले निर्वाचनको काम सम्पन्न गर्न दफा ५ बमोजिम नियुक्त गरेको वा तोकेको वा खटाएको कर्मचारीले निर्वाचनको निष्पक्षतामा असर पर्ने कुनै काम गरेमा सोको कारण खुलाई निजलाई सुम्पिएको कामबाट हटाउन सक्नेछ।

(२) आयोगले निर्वाचनको सम्बन्धमा सुरक्षाका लागि खटिई आएका सुरक्षाकर्मीलाई निर्वाचनसँग प्रत्यक्ष वा अप्रत्यक्ष तवरले सम्बन्धित कुनै काम गर्ने वा नगर्ने आदेश दिन सक्नेछ। यसरी निर्वाचनको काममा खटिएका सुरक्षाकर्मीले निर्वाचनको निष्पक्षतामा असर पर्ने कुनै काम गरेमा आयोगले सोको कारण खुलाई त्यस्ता सुरक्षाकर्मीलाई सुम्पिएको कामबाट हटाउन सक्नेछ।

११. अस्थायी दरबन्दी र कर्मचारीको नियुक्ति : (१) आयोगले निर्वाचनको काम सञ्चालन र सम्पन्न गर्न राजपत्राङ्कित प्रथम श्रेणीसम्मको सुविधा पाउने गरी अस्थायी पदको दरबन्दी बढीमा छ महिनासम्मका लागि आवश्यक संख्यामा सिर्जना गर्न सक्नेछ।

(२) उपदफा (१) बमोजिम सिर्जना गरिएका पदको अवधि आयोगले अर्को छ महिनासम्मका लागि एकैपटक वा पटक-पटक गरी बढाउन सक्नेछ।

(३) उपदफा (१) बमोजिम सिर्जना गरिएका पदमा आयोगले अस्थायी वा करार वा ज्यालादारीमा नियुक्त गर्न सक्नेछ।

१२. विशेषज्ञको सेवा लिन सक्ने : (१) आयोगले आवश्यकतानुसार निर्वाचनको कामको सम्बन्धमा विशेषज्ञको सेवा लिन सक्नेछ।

(२) उपदफा (१) बमोजिम लिइएको विशेषज्ञको सेवाको कार्य विवरण र पारिश्रमिक आयोगले निर्धारण गरे बमोजिम हुनेछ।

१३. सुविधा दिन सक्ने : (१) आयोगले निर्वाचनको कुनै काममा संलग्न पदाधिकारी वा कर्मचारीलाई आयोगले निर्धारण गरे बमोजिमको रकम र बढी समय काममा लगाउनु परेमा खाजा तथा खाना खर्च र अतिरिक्त समय भत्ता समेत दिन सक्नेछ।

(२) आयोगले निर्वाचनको कुनै काममा लगाएका पदाधिकारी वा कर्मचारीलाई निजले प्रचलित कानून बमोजिम पाउने दैनिक भत्ता र भ्रमण भत्तामा आयोगले निर्धारण गरे बमोजिमको रकम समेत आवश्यकतानुसार थप दिन सक्नेछ।

(३) आयोगले निर्वाचनको कुनै काममा लगाएका पदाधिकारी वा कर्मचारीलाई सो काममा संलग्न रहेको अवधिसम्मका लागि आयोगले निर्धारण गरे बमोजिमको रकम थप भत्ता दिन सक्नेछ।

(४) निर्वाचनको काममा संलग्न पदाधिकारी, कर्मचारी तथा सुरक्षाकर्मीको निर्वाचन अवधिभर हुने दुर्घटनाका लागि आयोगले तोकेको रकम बिमा गरिदिनु पर्नेछ।

...........∝

१४. भाडा वा क्षतिपूर्ति दिने : (१) निर्वाचनको कुनै कामका लागि आयोगले वा आयोगको आदेशले दफा ९ बमोजिम कुनै व्यक्ति वा संस्था वा निकायको जग्गा, भवन, परिवहनको साधन, फर्निचर वा अन्य भौतिक साधन भाडा तिर्ने गरी प्रयोग गरेको अवस्थामा सो अवधिभरका लागि त्यसरी प्रयोग गरिएका जग्गा, भवन, परिवहनको साधन, फर्निचर वा अन्य भौतिक साधनको भाडा आयोगले दिनेछ।

(२) निर्वाचनको कुनै कामका लागि आयोगले वा आयोगको आदेशले प्रयोग गरेको जग्गा, भवन, परिवहनको साधन, फर्निचर वा अन्य भौतिक साधन टुटफुट भई मर्मत गर्नु परेमा वा क्षतिपूर्ति दिनु पर्ने भएमा त्यस्तो मर्मत गर्न लाग्ने वा लागेको रकम वा क्षतिपूर्ति दिनु पर्दा वास्तविक रुपमा भएको नोक्सानी बमोजिमको मनासिब माफिकको रकम आयोगले क्षतिपूर्ति दिनेछ।

१५. निर्वाचनमा खर्च गर्न सक्ने : (१) निर्वाचनको काममा खटिएका कर्मचारीलाई प्रचलित कानून बमोजिम पाउने दैनिक भत्ता, भ्रमण भत्ता, अन्य भत्ता र सुविधा सो कर्मचारी खटिएकै समयमा खर्च लेखी भुक्तानी दिन सकिनेछ।

(२) प्रचलित कानूनमा जुनसुकै कुरा लेखिएको भए तापनि उपदफा (१) बमोजिम प्राप्त गरेको रकमको बिल भरपाई सम्बन्धित कर्मचारीले बुझाउनु पर्ने छैन।

(३) निर्वाचन सञ्चालनका लागि लाग्ने खर्च निर्वाचनमा खटिएका कर्मचारीलाई निजले खर्च गर्न पाउने गरी आयोगद्वारा निर्धारित दर बमोजिम खर्च लेखी दिइनेछ।

(४) उपदफा (३) बमोजिमको रकममध्ये आयोगले तोकिदिएको रकमको निर्वाचनको काममा खटिएका कर्मचारीले निज खटिई गएको काम समाप्त गरी फर्किएपछि बिल भरपाई पेश गर्नु पर्ने छैन।

१६. मालसामान खरिद गर्न सक्ने : (१) प्रचलित कानूनमा जुनसुकै कुरा लेखिएको भए तापनि आयोगले निर्वाचनको कामका लागि आवश्यक पर्ने जिन्सी मालसामान खरिद गर्दा वा सेवा प्राप्त गर्दा प्रचलित

---

∝ **निर्वाचन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६४ द्वारा झिकिएको।**

कानून बमोजिम बोलपत्र लिन सम्भव नभएमा सोको कारण उल्लेख गरी दरभाउपत्रबाट र दरभाउपत्र पनि लिन सम्भव नभएमा सोझै बजारबाट मालसामान खरिद गर्न वा सेवा प्राप्त गर्न सक्नेछ ।

(२) प्रचलित कानूनमा जुनसुकै कुरा लेखिएको भए तापनि आयोगले निर्वाचनका लागि मतदाता नामावली तयार गराउँदा, मतपत्र छपाउँदा वा कम्प्युटर, प्रिण्टर वा फोटोकपी मेशीनको सञ्चालन गर्दा त्यसका पार्टपुर्जाहरु वा त्यसमा प्रयोग गरिने सफ्टवेयरका सामानहरु तथा विशेष प्रकारका कागज खरिद गर्दा प्रचलित कानून बमोजिम बोलपत्र वा दरभाउपत्र लिन सम्भव नहुने वा लिन व्यावहारिक नहुने भनी निर्णय गरेमा त्यस्तो बोलपत्र वा दरभाउपत्र लिनु पर्ने छैन ।

१७. निर्वाचन रद्द गर्न सक्ने : (१) कसैले कुनै किसिमको धाक, धम्की, डर वा त्रास देखाई वा अन्य किसिमले अनुचित प्रभावमा पारी कुनै निर्वाचन क्षेत्र वा मतदान केन्द्रमा निर्वाचनको कुनै काम वा मतदानको कामको निष्पक्षता र स्वतन्त्रतामा असर पुऱ्याउने काम गरेको छ भनी आयोगमा उजुरी परेमा वा सो कुराको जानकारी आयोगलाई प्राप्त भएमा आयोगले कुनै आयुक्त आयोगको सचिव वा आयोगबाट अधिकार प्रदान गरिएको अन्य कुनै अधिकारीबाट सो सम्बन्धमा तत्काल जाँचबुझ गराउन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम आयोगले गराएको जाँचबुझको प्रतिवेदनबाट निर्वाचनको कुनै काम स्वतन्त्र र निष्पक्ष नभएको कुरामा आयोग विश्वस्त भएमा आयोगले सो कुरा खुलाई सो निर्वाचन क्षेत्रको निर्वाचन वा सो निर्वाचन क्षेत्रको कुनै वा सबै मतदान केन्द्रको मतदानको काम रद्द गर्न सक्नेछ ।

१८. उम्मेदवारको अयोग्यता सम्बन्धी निर्णय गर्ने : (१) संविधान सभाका सदस्यको निर्वाचनमा उम्मेदवारीको मनोनयन दर्ता भइसकेको तर निर्वाचन पूरा नहुँदै कुनै उम्मेदवार संविधानको धारा ६५ अनुसार अयोग्य छ वा हुनगएको छ भन्ने विषयमा स्पष्ट प्रमाण सहित सम्बन्धित निर्वाचन अधिकृत मार्फत निर्वाचन आयोग समक्ष उजुरी दिन सकिनेछ ।

(२) उपदफा (१) बमोजिम उजुरी प्राप्त भएमा सम्बन्धित निर्वाचन अधिकृतले त्यस्तो उम्मेदवारलाई सात दिनको म्याद दिई सो सम्बन्धमा स्पष्टीकरण माग गर्न सक्नेछ ।

(३) उपदफा (२) बमोजिम स्पष्टीकरण प्राप्त भएपछि वा म्यादभित्र स्पष्टीकरण प्राप्त नभएकामा सोही व्यहोरा उल्लेख गरी सम्बन्धित निर्वाचन अधिकृतले उपदफा (१) बमोजिम परेको उजुरी र तत्सम्बन्धी कागजात यथाशीघ्र आयोगमा पठाउनु पर्नेछ ।

(४) उपदफा (३) बमोजिम उजुरी र तत्सम्बन्धी कागजात प्राप्त भएपछि आयोगले चाहेमा सम्बन्धित उम्मेदवारसँग केही कुरा बुझ्न वा थप प्रमाण माग्न सक्नेछ ।

(५) आयोगले यस दफा बमोजिम प्राप्त उजुरी र संलग्न कागजातउपर आवश्यक जाँचबुझ गरी उपदफा (३) बमोजिम निर्वाचन अधिकृतबाट आफू समक्ष उजुरी प्राप्त भएको मितिले सात दिनभित्र उम्मेदवारको अयोग्यता सम्बन्धमा निर्णय गरिसक्नु पर्नेछ ।

(६) यस दफामा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि आयोगले कुनै उम्मेदवारको अयोग्यताका सम्बन्धमा यस दफा बमोजिम निर्णय गरिनसकेको कारणबाट मात्र त्यस्तो निर्वाचनको काम कारबाहीमा कुनै असर पर्ने छैन ।

## परिच्छेद-३

## निर्वाचनको प्रयोजनका लागि राजनैतिक दल दर्ता सम्बन्धी व्यवस्था

१९. निर्वाचनको प्रयोजनका लागि राजनैतिक दल दर्ता गराउन निवेदन दिनु पर्ने : (१) प्रचलित कानूनमा जुनसुकै कुरा लेखिएको भए तापनि निर्वाचनको प्रयोजनका लागि राजनैतिक दल दर्ता गराउन चाहने राजनैतिक दलले आयोगले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी तोकिदिएको कार्यविधि पूरा गरी सोही सूचनामा तोकिएको म्यादभित्र आयोगमा निवेदन दिनु पर्नेछ।

(२) उपदफा (१) बमोजिम निवेदन दिने राजनैतिक दलले संविधानमा उल्लिखित शर्तहरु पूरा गरेको वा पूरा गर्ने कबुल गरेको कुरा समेत उल्लेख गर्नु पर्नेछ।

(३) राजनैतिक दलले उपदफा (२) बमोजिमको शर्तहरु पूरा गर्दा अन्य कुराका अतिरिक्त संविधानको धारा १४२ को उपधारा (५) बमोजिम कम्तीमा दश हजार मतदाताहरुको समर्थन सहितको हस्ताक्षर भएको विवरण पेश गर्नु पर्नेछ र त्यसरी भएको हस्ताक्षरको सम्पुष्टि (भेरिफिकेशन) आयोगले तोके बमोजिम गर्नेछ।

तर अन्तरिम व्यवस्थापिका-संसदमा प्रतिनिधित्व गर्ने दलहरुको हकमा यो प्रावधान लागू हुने छैन ।

(४) यस दफामा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि यो ऐन प्रारम्भ भएपछि एकपटक दर्ता भएको राजनैतिक दलको यस ऐन बमोजिम दर्ता कायम रहेसम्म त्यसपछि हुने निर्वाचनको प्रयोजनका लागि दर्ता गराउनु पर्ने छैन ।

२०. राजनैतिक दलको दर्ता : (१) दफा १९ को उपदफा (१) बमोजिम निवेदन प्राप्त भएपछि आयोगले सो राजनैतिक दलको सम्बन्धमा अन्य कुरा बुझ्न आवश्यक देखेमा सो समेत बुझी संविधान तथा यस ऐन बमोजिम रीत पुगे वा नपुगेको हेरी रीत पुगेको भए सो दल दर्ता गर्नेछ र यसरी दर्ता भएको राजनैतिक दलले निर्वाचनका लागि मान्यता प्राप्त गरेको मानिनेछ।

(२) आयोगले उपदफा (१) बमोजिम कुनै राजनैतिक दल दर्ता हुन नसक्ने कारण भएमा त्यस्तो कारण खुलाई सम्बन्धित राजनैतिक दललाई आफ्नो भनाइ पेश गर्ने मनासिब मौका दिनेछ। त्यसरी मौका दिइएकोमा त्यस्तो दलले पेश गरेको भनाइ समेतमा आवश्यक विचार गरी आयोगले सो दल दर्ता गर्ने वा नगर्ने निर्णय गर्नेछ र आयोगले गरेको सो निर्णय अन्तिम हुनेछ।

(३) उपदफा (२) बमोजिम कुनै राजनैतिक दल दर्ता नगर्ने निर्णय गरेमा आयोगले निवेदकलाई जानकारी दिनु पर्नेछ ।

(४) दफा १९ को उपदफा (१) बमोजिम निवेदन दिने दुई वा दुईभन्दा बढी राजनैतिक दलको नाम एउटै देखिन आएमा आयोगले सम्बन्धित दलहरुसँग परामर्श गरी सम्भव भएसम्म त्यस्ता राजनैतिक दलहरुको राय परामर्श बमोजिम त्यस्ता दल छुट्टाछुट्टै रुपमा पहिचान हुन सक्ने गरी दर्ता गर्न सक्नेछ ।

(५) कुनै राजनैतिक दलहरुको बीचमा मतैक्य हुन नसकी उपदफा (४) बमोजिम त्यस्तो राजनैतिक दलको राय परामर्श अनुसार दल दर्ता गर्न नसकिएमा आयोगले त्यस्ता दलहरु छुट्टाछुट्टै रुपमा पहिचान हुन सक्ने गरी दर्ता गर्नेछ ।

(६) यस दफा बमोजिम कुनै राजनैतिक दलको नाम दर्ता भइसकेपछि सोही नामबाट अन्य कुनै राजनैतिक दलको नाम दर्ता गरिने छैन ।

२१. राजनैतिक दल विभाजित भई दर्ता गर्न आएमा : यस परिच्छेद बमोजिम दर्ता भएका कुनै राजनैतिक दल आपसमा विभाजित भई वा छुट्टिई मूल दलको केन्द्रीय कार्यकारिणी समितिको कम्तीमा चालीस प्रतिशत सदस्यहरुले आफ्नो सदस्यताको हैसियत वा प्रमाण समेत संलग्न गरी छुट्टै दलको नाम राखी वा सोही दलको नाम छुट्टै समूहको रुपमा पहिचान हुने गरी दर्ता गरी पाउन आयोगमा निवेदन दिएमा आयोगले सो सम्बन्धमा आवश्यक जाँचबुझ गरी त्यस्तो राजनैतिक दललाई छुट्टै दलको रुपमा दर्ता गर्न सक्नेछ ।

२२. राजनैतिक दलहरु संयुक्त भएमा : (१) यस परिच्छेद बमोजिम दर्ता भएका कुनै दुई वा दुईभन्दा बढी राजनैतिक दलहरुले आपसमा सम्झौता गरी दर्ता भइरहेको कुनै राजनैतिक दलको नाममा वा नयाँ नाममा संयुक्त हुने वा गाभिने भई सोही व्यहोरा खुलाई त्यसरी संयुक्त हुने वा गाभिने दलहरुका केन्द्रीय कार्यकारिणी समितिका सदस्यहरुले आयोगमा निवेदन दिएमा आयोगले सो सम्बन्धमा आवश्यक जाँचबुझ गरी त्यस्तो संयुक्त भएको वा गाभिएको स्वरुपलाई छुट्टै राजनैतिक दलका रुपमा दर्ता गर्न वा कुनै एक राजनैतिक दललाई कायम गरी अर्को राजनैतिक दलको दर्ता रद्द गर्नेछ ।

(२) उपदफा (१) बमोजिम संयुक्त हुने वा गाभिने दलहरुमध्ये कुनै दलको केन्द्रीय कार्यकारिणी समितिका कम्तीमा चालीस प्रतिशत सदस्यहरुले सो बमोजिम संयुक्त हुने वा गाभिने कुरामा मञ्जुर नगरी साबिकको दल कायम राख्ने निर्णय गरी निर्वाचनको मिति घोषणा हुनुभन्दा अगावै उपदफा (१) बमोजिमको कारबाहीको विरोध गरी निवेदन दिएमा सो सम्बन्धमा आयोगले आवश्यक जाँचुबझ गरी उचित वा मनासिब लागेमा दफा २१ को अधीनमा रही त्यस्तो दलको दर्ता कायम राख्न सक्नेछ ।

(३) उपदफा (१) वा (२) बमोजिम राजनैतिक दलको दर्ता कायम राखिएकोमा त्यस्ता दलहरुको केन्द्रीय कार्यकारिणी समितिका पदाधिकारीहरुको आयोगले अभिलेख जनाई राख्नेछ ।

(४) उपदफा (१) र (२) को प्रयोजनका लागि कुनै राजनैतिक दलको केन्द्रीय कार्यकारिणी समितिको सदस्य यकिन गर्दा त्यस्तो दल विभाजित हुनुभन्दा तत्काल अगाडि कायम रहेको केन्द्रीय समितिलाई आधार मानिनेछ।

२३. राजनैतिक दलको नामावली प्रकाशन गरिने : यस परिच्छेद बमोजिम दर्ता भएको राजनैतिक दलको नामावली आयोगले नेपाल राजपत्रमा प्रकाशन गर्नेछ ।

२४. राजनैतिक दलको दर्ता खारेज सम्बन्धी व्यवस्था : (१) आयोगले यस परिच्छेद बमोजिम दर्ता भएको राजनैतिक दलको दर्ता देहायको आधारमा खारेज गर्न सक्नेछ :-

(क) सम्बन्धित राजनैतिक दल आफैले आफ्नो दर्ता खारेज गर्न आयोग समक्ष निवेदन दिएमा,

(ख) लगातार तीन वर्षसम्म प्रचलित कानून बमोजिम आयोगलाई बुझाउनु पर्ने विवरण नबुझाएमा,

(ग) संविधान वा निर्वाचन सम्बन्धी प्रचलित कानून बमोजिम राजनैतिक दल दर्ता गर्न पूरा गर्नु पर्ने शर्त पूरा नगरेमा ।

(२) उपदफा (१) को खण्ड (क) को अवस्थामा बाहेक अन्य अवस्थामा दर्ता खारेज गर्नुपूर्व आयोगले सम्बन्धित राजनैतिक दललाई आफ्नो भनाइ पेश गर्ने मनासिब मौका दिनु पर्नेछ।

(३) उपदफा (२) बमोजिम दिइएको मौकामा आफ्नो भनाइ पेश नगरेमा वा पेश गरेको भनाइ मनासिब नदेखिएमा आयोगले त्यस्तो दर्ता खारेज गर्न सक्नेछ।

(४) उपदफा (१) बमोजिम राजनैतिक दलको दर्ता खारेज गरिएको सूचना आयोगले नेपाल राजपत्रमा प्रकाशन गर्नेछ।

(५) उपदफा (४) बमोजिम सूचना प्रकाशन भएपछि त्यस्तो राजनैतिक दलको दर्ता खारेज भएको मानिनेछ।

२५. दर्ता नभई निर्वाचनमा भाग लिन नपाउने : यस ऐन बमोजिम दर्ता नभएको कुनै राजनैतिक दलले दलको हैसियतमा निर्वाचनमा भाग लिन पाउने छैन ।

परिच्छेद-४

राजनैतिक दलको मान्यता सम्बन्धी विवाद

२६. आयोगबाट निर्णय हुने : ♣(१) एकपटक आयोगमा दर्ता भइसकेको कुनै राजनैतिक दलको नाम, विधान, चुनाव चिन्ह वा झण्डाको दावी गरी सो दलको केन्द्रीय कार्यकारिणी समितिका कम्तीमा चालीस प्रतिशत सदस्य संख्या सम्मिलित समूहहरुले यस ऐन बमोजिम मान्यता पाउनका लागि आयोगमा निवेदन दिएमा आयोगले त्यस्तो विवादको निरुपण गर्नेछ ।

तर निर्वाचनको मिति घोषणा भए पश्चात् प्राप्त हुन आएको निवेदनउपर आयोगले कारबाही गर्ने छैन ।"

(२) उपदफा (१) बमोजिम विवादको निरुपण गर्दा आयोगले त्यस्ता विवादका पक्षहरुसँग आफ्नो भनाइ पेश गर्न पन्ध्र दिनको म्याद दिई सूचना पठाउनु पर्नेछ ।

(३) उपदफा (२) बमोजिम प्राप्त सूचनाको म्यादभित्र विवादका सम्बन्धित पक्षहरुले आफ्नो भनाइ आयोग समक्ष पेश गर्नु पर्नेछ ।

(४) आयोगले यस दफा बमोजिम कुनै राजनैतिक दलसँग सम्बन्धित विवादको निरुपण गर्दा विवादका पक्षहरुसँग परामर्श गरी सहमति कायम हुन सकेमा सो सहमति बमोजिम कुनै एक पक्षलाई मान्यता प्रदान गर्ने निर्णय गरी अर्को पक्षलाई छुट्टै राजनैतिक दलको रुपमा दर्ता गर्न सक्नेछ ।

(५) उपदफा (४) बमोजिम विवादका पक्षहरुबीच सहमति कायम हुन नसकेमा आयोगले त्यस्ता पक्षहरुलाई आफूले दाबी गरेको नाम, विधान, चुनाव चिन्ह वा झण्डा निजहरुले नै प्रयोग गर्दै आएको वा निजहरुले नै प्रयोग गर्न पाउनु पर्ने आधार र प्रमाण आयोग समक्ष पेश गर्न आदेश दिनेछ ।

(६) उपदफा (५) बमोजिमको आधार र प्रमाण पेश भएकोमा सो बमोजिम कुनै पक्षलाई मान्यता दिने पर्याप्त आधार भएकोमा सोही बमोजिम र सो बमोजिम आधार र प्रमाण पेश नभएमा वा पेश भएको आधार र प्रमाणबाट सो कुरा यकिन हुन नसकेमा उपदफा (१) बमोजिम निवेदन दिनुअघि त्यस्तो राजनैतिक दलका तर्फबाट आयोगमा पेश भएको केन्द्रीय कार्यकारिणी समितिका पदाधिकारी र सदस्यमध्ये जुन विवादका पक्षहरुसँग त्यस्तो दलको पदाधिकारी र सदस्यहरुको बहुमत रहेको छ त्यस्तो विवादको पक्षलाई निवेदन माग बमोजिम मान्यता दिई अर्को पक्षलाई छुट्टै राजनैतिक दल वा सोही राजनैतिक दलको छुट्टै समूह पहिचान हुने गरी दर्ता गर्ने निर्णय गर्न सक्नेछ ।

तर विवादको कुनै पनि पक्षसँग बहुमत रहेको नदेखिएमा कुनै पनि पक्षलाई मान्यता दिइने छैन ।

♣ निर्वाचन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६४ द्वारा संशोधित ।

२७. आयोगले सुनुवाइ गर्ने : (१) दफा २६ को उपदफा (६) बमोजिम कुनै राजनैतिक दलसम्बन्धमा उठेको विवाद निरुपण गर्नुअघि आयोगले आयोगमा तत्काल कायम रहेका प्रमुख निर्वाचन आयुक्त र आयुक्त रहेको इजलास कायम गरी सुनुवाइ गर्नेछ।

तर काबुबाहिरको परिस्थिति परी कुनै आयुक्त उपस्थित हुन नसकेको कारणले मात्र सुनुवाइ गर्ने काममा बाधा परेको मानिने छैन ।

(२) उपदफा (१) बमोजिमको इजलासमा दाबी लिने पक्ष वा विपक्षले आफ्नो कानून व्यवसायी मुकरर गरी बहस पैरवी गराउन सक्नेछ।

(३) यस दफा बमोजिम सुनुवाइ गर्दा आयोगले विवादसँग सम्बन्धित पक्षहरुलाई सुनुवाइ हुने दिनभन्दा कम्तीमा तीन दिन अगावै सूचना दिनु पर्नेछ। यसरी सूचना दिइएकोमा सम्बन्धित पक्षहरुको प्रतिनिधि सुनुवाइको बखत उपस्थित हुन सक्नेछ।

तर सम्बन्धित पक्षहरुको प्रतिनिधि उपस्थित नभएको कारणबाट मात्र सुनुवाइ गर्नमा बाधा पर्ने छैन ।

(४) आयोगले यस दफा बमोजिम सुनुवाइ गर्दा आवश्यक देखेको प्रमाणहरु बुझ्न सक्नेछ।

(५) सम्बन्धित पक्षहरुले दफा २६ को उपदफा (३) बमोजिम आफ्नो भनाइ आयोग समक्ष पेश गरेकोमा पेश गरेको मितिले वा पेश नगरेकोमा पेश गर्ने म्याद समाप्त भएको मितिले *पैतिस दिनभित्र आयोगले आफू समक्ष पेश भएको विवादको निरुपण गरिसक्नु पर्नेछ।

(६) आयोगले यस परिच्छेद बमोजिम विवादको सुनुवाइ गर्दा अदालतलाई भए सरहको अधिकार प्रयोग गर्नेछ।

(७) यस परिच्छेद बमोजिम आयोगले गरेको निर्णय अन्तिम हुनेछ।

परिच्छेद-५

## आचारसंहिता

२८. आचारसंहिता : (१) आयोगले निर्वाचनमा स्वच्छता, निष्पक्षता, पारदर्शिता तथा भयमुक्त वातावरण कायम राख्न नेपाल सरकार, सरकारी तथा अर्धसरकारी संस्थाको कार्यालय तथा कर्मचारी, निर्वाचनको काममा संलग्न कर्मचारी, राजनैतिक दल, उम्मेदवार तथा निजहरुसँग सम्बन्धित व्यक्तिहरु, सरकारी तथा निजी क्षेत्रका आम सञ्चारका माध्यमहरुले पालना गर्नु पर्ने आचारसंहिता बनाउन सक्नेछ । आयोगले यसरी आचारसंहिता बनाउँदा सम्बन्धित सरोकारवालासँग परामर्श गर्नेछ।

* निर्वाचन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६४ द्वारा संशोधित।

(२) उपदफा (१) बमोजिम आयोगले आचारसंहिता बनाउँदा खासगरी निर्वाचनको स्वच्छता र निष्पक्षतामा प्रभाव पर्ने गरी नेपाल सरकारले नयाँ नीति, योजना तथा कार्यक्रम घोषणा गर्न, जनशक्ति तथा साधन स्रोतको परिचालन गर्न तथा निर्वाचन प्रचार-प्रसारका लागि सरकारी सञ्चार साधनको प्रयोग गर्न नपाउने विषयमा आचारसंहिता बनाउन सक्नेछ ।

(३) उपदफा (२) बमोजिम आयोगले बनाएको आचारसंहिता नेपाल राजपत्रमा प्रकाशन गरिनेछ र त्यस्तो आचार संहिताको पालन गर्नु सम्बन्धित सबैको कर्तव्य हुनेछ ।

२९. आचारसंहिता कार्यान्वयन तथा अनुगमन : (१) दफा २८ बमोजिम निर्माण हुने आचारसंहिता पालना भए नभएको सम्बन्धमा आयोगले आवश्यकतानुसार जिल्ला र निर्वाचन क्षेत्र तहमा समेत तोकिए बमोजिमको उपयुक्त संयन्त्र निर्माण गरी जाँचबुझ तथा अनुगमन गर्नेछ ।

(२) उपदफा (१) बमोजिम जाँचबुझ वा अनुगमन गर्दा कसैबाट आचारसंहिता पालना नभएको वा उल्लंघन गरेको देखिएमा त्यस्तो काम तुरुन्त रोक्न वा बदर गर्नका लागि आयोगले सम्बन्धित राजनैतिक दल, उम्मेदवार, व्यक्ति, संस्था, पदाधिकारी वा निकायलाई आदेश दिनेछ ।

(३) उपदफा (२) बमोजिम आयोगले दिएको आदेश बमोजिम काम कारबाही नरोक्ने वा वदर नगर्ने राजनैतिक दल, उम्मेदवार, व्यक्ति, संस्था, पदाधिकारी वा निकायलाई आयोगले एक लाख रुपैयाँसम्म जरिबाना गर्न सक्नेछ ।

(४) कुनै उम्मेदवारले आयोगले बनाएको आचार संहिताको उल्लंघन गरेको कारणबाट निर्वाचन स्वतन्त्र, स्वच्छ र धाँधलीरहीत तवरबाट हुन नसक्ने कुरामा आयोग विश्वस्त भएमा सोको स्पष्ट आधार र कारण खोली आयोगले त्यस्तो उम्मेदवारको उम्मेदवारी रद्द गर्न सक्नेछ । यसरी उम्मेदवारी रद्द गर्नु अघि सम्बन्धित उम्मेदवारलाई सफाईको उचित मौका उपलब्ध गराउनु पर्नेछ ।

## परिच्छेद-६

## निर्वाचन खर्च सम्बन्धी व्यवस्था

३०. निर्वाचन खर्चको हद तोक्ने : (१) आयोगले राजनैतिक दल वा उम्मेदवारले निर्वाचनमा गर्न पाउने खर्चको हद तोक्न सक्नेछ ।

(२) उपदफा (१) बमोजिम तोकिएको निर्वाचन खर्चको हद आयोगले नेपाल राजपत्रमा प्रकाशन गर्नु पर्नेछ ।

(३) निर्वाचनमा भाग लिने राजनैतिक दल वा उम्मेदवारले आयोगले तोकेको रकमभन्दा बढी हुने गरी निर्वाचन खर्च गर्नु वा गराउनु हुँदैन ।

(४) उपदफा (१) बमोजिमको निर्वाचन खर्चको विवरण पेश गर्नु पर्ने दायित्व भएको व्यक्तिले आयोगले तोकेको ढाँचामा निर्वाचनको अन्तिम परिणाम प्रकाशित भएको मितिले पैंतीस दिनभित्र सम्बन्धित जिल्ला निर्वाचन कार्यालयमा निर्वाचन खर्चको विवरण पेश गर्नु पर्नेछ ।

(५) उपदफा (४) बमोजिम पेश भएको निर्वाचन खर्चको विवरण आयोगबाट तोकिएको अवस्थामा मान्यता प्राप्त लेखापरीक्षकबाट लेखापरीक्षण गराउन सकिनेछ ।

३१. निर्वाचनमा निर्धारित हदभन्दा बढी खर्च गरेमा हुने सजाय : (१) दफा ३० को उपदफा (१) बमोजिम आयोगबाट निर्धारित हदभन्दा बढी खर्च गरेमा वा सोही दफाको उपदफा (४) बमोजिम तोकिएको अवधिमा खर्च विवरण पेश नगरेमा आयोगले त्यस्तो व्यक्तिलाई निजले गरेको निर्वाचन खर्च वा आयोगद्वारा निर्धारित खर्चको हदमध्ये जुन बढी हुन्छ सोही बराबरको रकम जरिबाना गर्न सक्नेछ ।

(२) दफा ३० को उपदफा (४) बमोजिम पेश भएको विवरणमा सोही दफाको उपदफा (५) बमोजिम लेखापरीक्षण हुँदा लेखापरीक्षकको प्रतिवेदनको आधारमा अस्वाभाविक वा निर्वाचनको स्वच्छतामा प्रतिकूल हुने गरी वा गैरकानूनी प्रयोजनका लागि अनुचित वा गैरकानूनी तवरले खर्च गरेको देखिएमा त्यस्तो व्यक्तिलाई तत्कालैदेखि लागू हुने गरी बढीमा छ वर्षसम्म कुनै पनि निर्वाचनमा उम्मेदवार हुन अयोग्य हुने गरी आयोगले निर्णय गर्न सक्नेछ ।

(३) उपदफा (१) बमोजिम जरिबाना वा उपदफा (२) बमोजिम निर्णय गर्नुअघि आयोगले सम्बन्धित व्यक्तिलाई आफ्नो सफाई पेश गर्ने मनासिब मौका दिनु पर्नेछ ।

(४) आयोगले उपदफा (२) बमोजिम निर्णय गरेकोमा त्यस्तो व्यक्ति निर्वाचित भएको रहेछ भने निजको निर्वाचन स्वतः बदर हुनेछ ।

(५) आयोगबाट उपदफा (१), (२) र (४) बमोजिम भएको निर्णयउपर निर्णय भएको मितिले पैंतीस दिनभित्र सर्वोच्च अदालतमा पुनरावेदन दिन सकिनेछ ।

## परिच्छेद-७

## बजेट व्यवस्थापन तथा लेखापरीक्षण

३२. स्वीकृति लिनु नपर्ने : (१) प्रचलित कानूनमा जुनसुकै कुरा लेखिएको भए तापनि नेपाल सरकारले आयोगका लागि बजेटमा छुट्याएको आयोगको भैपरि आउने शीर्षक अन्तर्गतको रकम आयोगले यस ऐन बमोजिम खर्च गर्नु पर्दा नेपाल सरकार, अर्थ मन्त्रालयको स्वीकृति लिनु पर्ने छैन ।

(२) उपदफा (१) बमोजिमको रकम खर्च गर्दा आयोगबाट कार्यविधि बनाई निर्णय भए बमोजिम गर्नु पर्नेछ ।

३३. <u>वित्तीय स्रोत जुटाउन सक्ने</u> : आयोगले निर्वाचनको काम सम्पन्न गर्नका लागि नियमित बजेट शीर्षकबाट विनियोजित रकमका अतिरिक्त नेपाल सरकारको सहमतिमा छुट्टै वित्तीय स्रोत जुटाउन वा सहायता प्राप्त गर्न सक्नेछ ।

३४. <u>लेखा र लेखापरीक्षण</u> : (१) आयोगले निर्वाचन सम्बन्धी काममा गरेको खर्चको लेखा प्रचलित कानून बमोजिम राख्नु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम आयोगले राखेको लेखाको लेखापरीक्षण प्रचलित कानून बमोजिम हुनेछ ।

## परिच्छेद-८

## <u>विविध</u>

३५. <u>राय तथा परामर्श लिन सक्ने</u> : (१) आयोगले कुनै संवैधानिक वा निर्वाचन सम्बन्धी कानूनी प्रश्नमा निर्णय गर्नुपूर्व राय लिन उपयुक्त देखेमा महान्यायाधिवक्ता, सरकारी वकिल, कुनै कानून व्यवसायी वा अन्य विशेषज्ञको राय लिन सक्नेछ ।

(२) आयोगले आफ्नो काम कर्तव्यको सम्बन्धमा कुनै संवैधानिक अङ्ग वा नेपाल सरकारको कुनै मन्त्रालय, विभाग, कार्यालय, राजनैतिक दल वा कुनै सरकारी वा गैरसरकारी संस्था वा अन्य कुनै निकायसँग सोझै सम्पर्क राख्न, परामर्श गर्न वा राय लिन सक्नेछ ।

३६. <u>छलफल वा परामर्श गर्न सक्ने</u> : आयोगले वा आयोगका पदाधिकारीले स्वतन्त्र, स्वच्छ र धाँधलीरहित तवरबाट निर्वाचन गर्ने सन्दर्भमा कुनै राजनैतिक दल वा नागरिक समाजका प्रतिनिधि, निर्वाचन सम्बन्धी विज्ञ वा अन्य सम्बन्धित व्यक्ति वा संस्थासँग छलफल वा परामर्श गर्न सक्नेछ ।

३७. <u>मतदाता जागरण कार्यक्रम</u> : निर्वाचनमा मतदाता नामावली सङ्कलन गर्ने, अद्यावधिक गर्ने तथा मतदान गर्ने प्रक्रिया र मतदाताको अधिकारका सम्बन्धमा मतदाताहरुलाई जानकारी गराउन आयोगले आवश्यकतानुसार मतदाता जागरण कार्यक्रम सञ्चालन गर्न, गराउन सक्नेछ ।

३८. <u>अधिकार प्रत्यायोजन</u> : आयोगले आफ्नो कुनै अधिकार आवश्यकतानुसार प्रमुख निर्वाचन आयुक्त, आयुक्त, आयोगको सचिव, जिल्ला निर्वाचन अधिकारी, प्रमुख नाम दर्ता अधिकारी, नाम दर्ता अधिकारी, सहायक नाम दर्ता अधिकारी, मुख्य निर्वाचन अधिकृत, निर्वाचन अधिकृत, अनुगमनमा खटिएका अधिकृत, मतदान अधिकृत, सहायक मतदान अधिकृत वा निर्वाचनको काममा संलग्न पदाधिकारी वा कर्मचारीलाई प्रत्यायोजन गर्न सक्नेछ ।

३९. <u>निर्देशन दिन सक्ने</u> : (१) आयोगले मुख्य निर्वाचन अधिकृत, निर्वाचन अधिकृत, जिल्ला निर्वाचन अधिकारी, मतदान अधिकृत, सहायक मतदान अधिकृत, अनुगमनमा खटिएका अधिकृत वा मतदाता

नाम दर्ता अधिकारी वा निर्वाचनमा खटिएका अन्य कुनै कर्मचारी वा व्यक्तिलाई निजले गर्नु पर्ने कामका सम्बन्धमा आवश्यक निर्देशन दिन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम आयोगले दिएको निर्देशन पालन गर्नु सम्बन्धित सबैको कर्तव्य हुनेछ ।

४०. बहस पैरवी : (१) आयोगले कुनै कानूनी हक वा विवादको सम्बन्धमा कुनै अड्डा अदालतमा निवेदन दिन वा वादी भई मुद्दा चलाउन आवश्यक परेमा त्यस्तो निवेदन तयार गर्न, मुद्दा दायर गर्न र सोमा बहस पैरवी गर्न वा आयोग विरुद्ध कसैले कुनै कानूनी कारबाही चलाएकोमा वा मुद्दा दायर गरेकोमा लिखित जवाफ, प्रत्युत्तरपत्र तयार गर्न, दर्ता गर्न वा बहस पैरवी वा प्रतिरक्षा गर्न आयोगले आवश्यकता वा उपयुक्तताको आधारमा सरकारी वकिल वा कानून व्यवसायी वा दुवैलाई लगाउन सक्नेछ ।

(२) मतदाता नामावली तयार गर्ने लगायत निर्वाचन सम्बन्धी कुनै वा सबै कामका लागि आयोगबाट नियुक्त गरिएका, खटाइएका, तोकिएका वा लगाइएका पदाधिकारी तथा कर्मचारी एवं व्यक्तिहरुले प्रचलित कानून बमोजिम गर्नु पर्ने काम असल नियतले सम्पादन गर्दा सो सम्बन्धमा निजहरुको विरुद्ध दिइएको मुद्दा वा कानूनी कारबाहीमा आयोगले आवश्यकता तथा उपयुक्तताको आधारमा कुनै सरकारी वकिल वा कानून व्यवसायी मार्फत प्रतिरक्षा गराइदिनेछ ।

४१. विभागीय कारबाही र सजाय : (१) आयोगले मतदाता नामावली तयार गर्ने लगायत निर्वाचनको काममा नियुक्त गरिएका, खटाइएका वा तोकिएका वा आयोगको आदेश, निर्देशन पालना गर्नु पर्ने कर्तव्य भएका कुनै निजामती कर्मचारी, सुरक्षाकर्मी वा नेपाल सरकारको स्वामित्व वा नियन्त्रणमा रहेको वा नेपाल सरकारको अनुदानमा सञ्चालित संस्थाको कर्मचारीले त्यस्तो काम सम्पादनको सिलसिलामा प्रचलित कानून वा आयोगको आदेश वा निर्देशनको जानी-जानी उल्लंघन हुने गरी वा बदनीयतले कुनै काम कारबाही गरेमा वा निर्वाचनको निष्पक्षतामा असर पर्ने काम गरेमा आयोगले त्यस्तो कर्मचारी, सुरक्षाकर्मीउपर निजको सेवा शर्त सम्बन्धी प्रचलित कानून बमोजिम अख्तियारवालाको अधिकार प्रयोग गरी सो कानून बमोजिम विभागीय कारबाही र सजाय गर्न सक्नेछ ।

(२) उपदफा (१) मा लेखिएदेखि बाहेकका कुनै कर्मचारी वा पदाधिकारीले निर्वाचनको कामको सम्बन्धमा प्रचलित कानून वा आयोगले दिएको निर्देशनको विपरीत कुनै काम कारबाही गरेमा आयोगले त्यस्तो कर्मचारी वा पदाधिकारीउपर निजको सेवा शर्त सम्बन्धी प्रचलित कानून बमोजिम विभागीय कारबाहीका लागि सम्बन्धित निकायमा लेखी पठाउनेछ ।

(३) उपदफा (२) बमोजिम आयोगबाट लेखी आएमा सम्बन्धित निकायले त्यस्तो कर्मचारी वा पदाधिकारीउपर विभागीय कारबाही गरी सोको जानकारी आयोगलाई दिनु पर्नेछ ।

(४) आयोगले उपदफा (१) बमोजिम गरेको विभागीय कारबाही र सजाय सम्बन्धी निर्णयमा चित्त नबुझ्ने कर्मचारीले सो निर्णयउपर पुनरावेदनको म्याद पाएको वा जानकारी पाएको मितिले पैंतीस दिनभित्र सम्बन्धित कर्मचारी बहाल रहेको इलाकाको पुनरावेदन अदालतमा पुनरावेदन दिन सक्नेछ ।

४२. वार्षिक प्रतिवेदन प्रकाशन : आयोगले सम्पादन गरेका कार्यको विवरण प्रत्येक वर्ष वार्षिक प्रतिवेदनको रुपमा प्रकाशन गर्नेछ ।

४३. नेपाल सरकारसँग सम्पर्क : आयोगले नेपाल सरकारसँग सम्पर्क गर्दा गृह मन्त्रालय मार्फत गर्नु पर्नेछ ।

४४. नियम बनाउन सक्ने : यस ऐनको उद्देश्य कार्यान्वयन गर्न आयोगले आवश्यक नियमहरु बनाउन सक्नेछ ।

४५. आदेश जारी गर्ने : (१) आयोगले संविधान तथा प्रचलित कानून बमोजिम निर्वाचनको सञ्चालन, रेखदेख, निर्देशन र नियन्त्रण गर्ने प्रयोजनका लागि आवश्यक आदेश जारी गर्न सक्नेछ र त्यस्तो आदेश नेपाल राजपत्रमा प्रकाशन गरिनेछ ।

(२) उपदफा (१) बमोजिमको आदेश पालना गर्नु देहायका निकाय, संस्था, सङ्गठन वा व्यक्तिहरुको कर्तव्य हुनेछ :-

(क) सरकारी, अर्धसरकारी वा गैरसरकारी संस्था,

(ख) राजनैतिक दल तथा त्यसका पदाधिकारी,

(ग) मतदाता,

(घ) उम्मेदवार र निजका प्रतिनिधि,

(ङ) निर्वाचनको प्रचार-प्रसार तथा अनुगमनमा संलग्न व्यक्तिहरु ।

(३) यस दफा बमोजिम आयोगले जारी गरेको आदेश उल्लंघन गर्ने राजनैतिक दल, उम्मेदवार तथा अन्य सरोकारवाला निकाय, संस्था, सङ्गठन वा व्यक्तिलाई आयोगले एक लाख रुपैयाँसम्म जरिबाना गर्न सक्नेछ ।

४६. निर्देशिका बनाउन सक्ने : आयोगले आफ्नो काम सुचारु रुपले सञ्चालन गर्ने गराउने प्रयोजनका लागि निर्देशिकाहरु बनाई लागू गराउन सक्नेछ र त्यस्तो निर्देशिकाको पालना गर्नु सम्बन्धित सबैको कर्तव्य हुनेछ ।

४७. खारेजी तथा बचाउ : (१) निर्वाचन आयोग ऐन, २०४७ खारेज गरिएको छ ।

(२) उपदफा (१) मा उल्लिखित ऐन बमोजिम भए गरेका काम कारबाहीहरु यसै ऐन बमोजिम भए गरेको मानिनेछ ।